।।श्रीमते रामानुजाय नमः।।

# भगवत्क्षमाको महिमा



विवरणकर्ता

**श्रीकृष्णमाचार्य**

गैंडाकोट-१, नवलपरासी

।। श्रीमते रामानुजाय नमः ।।

# भगवत्क्षमाको महिमा


विवरणकर्ता –

श्रीकृष्णमाचार्य



प्रकाशक :

**जीवनाथ ज्ञवाली**

मन्दिरमार्ग, गैडाकोट–१

नवलपरासी, नेपाल

☎ ९८४५०२४१७४

भगवत्क्षमाको महिमा

प्रथम संस्करण - विक्रम सं. २०६३
मुद्रित प्रति - ५०० प्रति
मूल्य रु. - २०/-



प्राप्तिस्थान–

जीवनाथ ज्ञवाली
माण्डव्यनिवास
मन्दिरमार्ग, गैंडाकोट–१
नवलपरासी

अक्षरसंयोजक–

निधि कम्प्यूटर सेन्टर
सप्तसागर, देवकालीमार्ग
अयोध्या–फैजावाद, (उ.प्र.) भारत

।।श्रीमते रामानुजाय नमः।।

# विज्ञप्ति

*सदाचारनिष्ठा यदीया गरिष्ठा*
*तथा वैदुषी तत्त्वशास्त्रे वरिष्ठा।*
*समिन्धेस्म गीः सम्प्रदायार्थगर्भा*
*स जीयाच्चिरायैष गोपालसूरिः।।*

**सत्सम्प्रदायस्वरूपज्ञ श्रद्धालु सज्जनहरूको सन्निधानमा सविनय निवेदन।।**

*''स्तवप्रियः''* भन्ने भगवान्‌को यौटा विलक्षण नामलाई हामीहरूले श्रीविष्णुसहस्रनामस्तोत्रमा पढ्ने गर्दछौं। यो नाम ६८५ संख्याको हो। श्रीपराशरभट्टर् स्वामीजीले उक्त नामको यसरी भाष्य गर्नुभएको छ – *''यथाकथञ्चित्, यया कयाचित् भाषया, येन केनापि तेजस्करः तिरस्कारी वा गुणसङ्कीर्तनाभिमानेन क्रियमाणः स्तवः स्वविषयः प्रियतमोऽस्येति=स्तवप्रियः। अकण्टकमेतत् घण्टाक–र्णादिवृत्ते।।''*

कुनैपनि ढङ्गले र कुनै पनि भाषामा प्रभावको अतिशयलाई कीर्तन गर्ने पद्धतिले अथवा तिरस्कारकै पद्धतिले भएपनि ''मैले ईश्वरको गुणहरूको गणना गर्दछु''

भनेर प्रारम्भ गरेको भगवत्स्तोत्र उहाँको लागि प्रीतिको नै हेतु बन्दछ। त्यही भएर भगवान्को नाम **"स्तवप्रियः"** बन्यो। यस विषयमा घण्टाकर्ण र शिशुपालजस्ता व्यक्तिहरूको व्यवहार स्पष्टरूपमा साक्षी छ। लोकमा, नभएका गुणहरूलाई व्यक्तिमा आरोपण गरेर स्तुतिगर्ने परिपाटी प्रशस्तरूपमा मिल्छ। तर भगवान् त कल्याणगुणहरूको सागर नै हुनुहुन्छ। *"समस्तकल्याणगुणामृतोदधिः"* यो भगवद्यामुनमुनिको सूक्ति हो। *"अपरिमितोदारगुणसागरः"* यो श्रीभगवद्रामानुजस्वामीजीको पङ्क्ति हो। दुवै सूक्तिहरूको तात्पर्य–भगवान् समस्त कल्याणगुणहरूको समुद्र हुनुहुन्छ भन्ने अर्थमा नै हो। पर– व्यूह–विभवादि सबै स्थितिहरूमा भगवान् समस्तकल्याणगुणणहरूले समञ्चित भएरै रहनुहुन्छ। *"भवान् सर्वत्रैवत्वगणितमहामङ्गलगुणः"* भन्ने यस कूरेशस्वामीजीको सूक्तिले पूर्वोक्त विषयलाई स्पष्ट गर्दछ॥

*"गुणिनिष्ठगुणाभिधानम्–स्तुतिः"* भने अनुसार गुणवान्मा भएका गुणहरूको सङ्कीर्तन गर्नु नै स्तुति हो। भगवन्नामसङ्कीर्तन, सबै साधनहरू भन्दा उत्कृष्ट मानिएको छ। *"को धर्मः सर्वधर्माणां भवतः परमो मतः"* भनेर युधिष्ठिरजीले प्रश्न गर्दाखेरि भक्तिपूर्वक पुण्डरीकाक्ष भगवान् नारायणको स्तुतिहरूद्वारा अर्चना गर्नु नै मेरो मतमा उत्कृष्ट

धर्म हो भनेर ब्रह्मज्ञशिरोमणि श्रीभीष्मपितामहजीले समाधान दिनुभएको छ–

*"एष मे सर्वधर्माणां धर्मोऽधिकतमो मतः।*
*यद्भक्त्या पुण्डरीकाक्षं स्तवैरर्चेन्नरस्सदा"॥*

यो उहाँको श्रीसूक्ति हो। यो स्तोत्रपरम्परा, वैदिकवाङ्मयदेखि प्रारम्भ भएर अविच्छिन्नरूपमा चल्दै आएको छ। श्रीविष्णुपुराण–श्रीमद्भागवत आदि ग्रन्थहरूमा तत्त्वदर्शी परमभक्तशिखामणिहरूले गरेका अनेकौं स्तुतिहरू छन्। श्रीपाञ्चरात्रागमशास्त्रमा पनि स्तुतिसन्दर्भहरू धेरै छन्। भगवद्भक्तिसिन्धु मानिने आल्वार्हरूका दिव्यप्रबन्धहरू सबै, तात्त्विक स्तुतिमै पर्यवसन्न भएकाछन्। श्रीयामुनाचार्य स्वामीजीद्वारा अनुगृहीत *कान्ताचतुःश्लोकी र स्तोत्ररत्न*, पछिका सबै आचार्यचरणहरूका लागि मार्गदर्शक बनेका छन्। श्रीरामानुजस्वामीजीको ***गद्यत्रय*** श्रीकूरेशमिश्रको ***पञ्चस्तवी*** उहाँका सुपुत्र पराशरभट्टर्स्वामीजीका श्रीरङ्गराजस्तव–श्रीगुणरत्नकोश आदि सुमधुर स्तोत्रहरू नित्यानुसन्धेय छन्। वेदान्तदेशिक आदि महापुरुषहरूका अनेकन् सुललित एवं प्रौढ स्तोत्ररचनाहरूले स्तोत्रसाहित्यको भण्डारलाई समृद्ध बनाएका छन्॥

श्रीरामानुजस्वामीजीका अग्रगण्य शिष्य श्री कूरेशस्वामीजीको वंशपरम्परामा रहेका महानुभावहरू

***"दीपादुत्पन्नप्रदीपवत्"*** भने अनुसार सबैजना विद्वान् एवं कुशल कविको रूपमा चरित्रमा मिल्नुहुन्छ।।

यसै क्रममा ***"क्षमाषोडशी"*** नामक प्रस्तुतस्तोत्रकर्ता पनि अन्यतम हुनु हुन्छ। उहाँको नाम ***वेदाचार्यभट्टर्*** हो। फलश्रुतिश्लोकको विवरणमा विशदरूपमा उहाँको परिचय अवगत गराइएको छ। ग्रन्थारम्भमा पनि उहाँको प्रस्ताव गरिएको छ। भगवान्सँग छलोक्तिको रूपमा उहाँले संवाद गर्नुभएको छ। स्तोत्र अत्यन्तै रोचक छ। भगवान्को क्षमागुणलाई सर्वोत्तम गुणको रूपमा कविले आविष्कार गर्नुभएको छ। यो भन्दा पहिला मुद्रित ***अमृतलहरी*** नामक आफ्नो कृतिमा ***"भगवान्को क्षमागुण"*** भन्ने शीर्षकमा यस विषयको चर्चा गरिएको छ। सहृदय पाठकहरूले ग्रहण गर्नुहोला।।

दक्षिणभारतका बीसौं शताब्दीका कीर्तनीय महापुरुष, श्रीरामानुजसम्प्रदायप्रवर्तकहरूमा अग्रगण्य, श्रीमदुभयवेदान्त मर्मज्ञ, वैकुण्ठवासी स्वाचार्यचरण ***श्री ते० कं० गोपालाचार्यस्वामीजीमहाराजको*** सन्निधानमा बाल्यकालमा आफूले अध्ययन गरेका र दक्षिणभारतमा नै उहाँकै आज्ञानुसार समय–समयमा आफूले तेलुगुभाषामा प्रवचन गरेका विषयहरू पुंखानुपुंखको रूपमा स्मरण हुने गर्दछन्। यो

भन्दा पहिला *मधुरोपहार, अमृतलहरी, श्रीवैष्णवसौभाग्यम्* नामक कृतिहरू प्रकाशित भएका थिये। चौथो कृतिको रूपमा सज्जनहरूको करकमलमा ''**क्षमाषोडशी**'' स्तोत्रको विवरणलाई ''***भगवत्क्षमाको महिमा***'' भन्ने नाम दिएर समर्पण गर्दै छु। गुण–दोष हरूको विवेचन त विज्ञहरूले नै गर्नुहुने छ। आचार्यमुखोल्लासको लागि र सज्जनहरूको आराधनाको लागि यो आफ्नो वाचिकसेवा हो।।

– स्वस्ति श्रीर्दिशतात् –

विद्वज्जनविधेय

**श्रीकृष्णमाचार्य**

गैंडाकोट १, नवलपरासी



## क्षमाषोडशिस्तोत्रकर्ता— श्रीवेदाचार्य

प्रस्तुत ***क्षमाषोडशि*** स्तोत्रका रचयिता ***श्रीवेदाचार्य स्वामीजीले*** श्रीभगवद्रामानुजस्वामीजीका प्रधान शिष्य श्रीकूरेशमिश्रको सद्वंशमा जन्म ग्रहण गर्नुभएको थियो। उक्त विषय ***''श्रीमान् कूरान्ववाये''*** भन्ने अन्तिमश्लोकमा विशदरूपमा थाहा हुन्छ। त्यो श्लोकमा यी कवि, श्रीरङ्गनाथ भगवान्‌को अत्यन्त प्रेमपात्र भक्त हुनुहुन्थ्यो भन्ने विषय ***''रङ्गराजस्य हृद्यः''*** भन्ने विशेषणद्वारा अवगत हुन्छ। त्यस्तो वाल्लभ्यले गर्दा भगवान्‌सँग नै सवाल गर्दै छलोक्ति को रूपमा यी रचयिताले संवाद गर्दैहुनुहुन्छ भन्ने कुरा स्पष्ट हुन्छ। धाराप्रवाहको रूपमा बगेको रचनावैखरी अनुसार वेदाचार्य, वश्यवाक् हुनुहुन्थ्यो भनेर भावना गर्न सकिन्छ। उत्तमभक्तमा रहनुपर्ने सुगाढ आर्ति, भगवान् नै रक्षक हुनुहुन्छ भन्ने दृढ विश्वास, अनन्यशरणत्व जस्ता उहाँका आत्मगुणहरू यस स्तोत्रमा पदे पदे अभिव्यक्त भएका छन्। हृदयपूर्वक यस स्तोत्रलाई पढ्ने व्यक्तिहरूको लागि भक्तपराधीन श्रीमन्नारायणभगवान्‌ले अवश्य नै प्रसन्न भएर परिपूर्ण कृपा गर्नुहुने छ भन्ने पवित्र अभिप्रायको साथमा सहृदय सज्जनहरूको सेवामा संक्षिप्तरूपमा आफ्नो मातृभाषा नेपालीमा विवरण गरेर उपहारको रूपमा समर्पण गर्दै छु॥



।।श्रीमते रामानुजाय नमः।।

# श्रीवेदाचार्यविरचिता-क्षमाषोडशी

*यश्चक्रे रङ्गिणः स्तोत्रं क्षमाषोडशिनामकम्।*
*वेदव्यासस्य तनयं वेदाचार्यं तमाश्रये।।*

## ✪ स्तोत्रारम्भः ✪

*श्रीरङ्गेश! यया करोषि जगतां सृष्टिप्रतिष्ठाक्षयान्*
*अत्रामुत्र च भोगमक्षयसुखं मोक्षं च तत्तत्तृषाम्।*
*त्वत्स्वातन्त्र्यमपास्य कल्पितजगत्क्षेमातिहृद्या स्वतः*
*क्षान्तिस्ते करुणासखी विजयतां क्षेमाय सर्वात्मनाम्।।१।।*

**विवरण**- हेस्वामिन्! श्रीरङ्गनाथ! हजुर जगत्को कारण हुनुहुन्छ। समस्तलोकहरूको सृष्टि-स्थिति एवं संहार गर्नको लागि हजुरको क्षमागुण नै प्रेरक बन्दछ। त्यसैगरी इहलोकमा र स्वर्गादि परलोकहरूमा पनि मानवहरूको लागि विविध ऐश्वर्यभोगहरू प्रदान गर्नको निमित्त, त्यसैगरी *'अक्षर'* नामक केवलात्मतत्त्वलाई उपासना गर्नेहरूको लागि आत्मानन्दरूप कैवल्य प्रदान गर्नको लागि र साथै ब्रह्मानन्दानुभवरूप परम मोक्ष प्रदान गर्नको लागि पनि हजुरको

हृदयमा जागृत भएर रहने वाला क्षमागुण नै हजुरको लागि उद्‌बोधक बन्दछ। ''मैले व्यवस्था गरेको शास्त्रमर्यादालाई उल्लंघन गरेर प्रवर्तन गर्ने व्यक्तिहरूलाई मैले कठिनरूपमा दण्ड दिएरै छोड्छु'' भन्ने हजुरको निरङ्कुशस्वातन्त्र्यलाई पनि बगलमा हटाएर हजुरको हृदयस्थानलाई आक्रमण गरेर रहने वाला यो क्षमागुण रहेको हुनाले नै समस्तलोकहरूको मंगल भैराखेको छ। अन्यथा, प्रकृतिको परवश भएर पापप्रवृत्तिमा फसेका हामीहरूजस्ता व्यक्तिहरूको लागि अनेकौं जन्म र कल्प व्यतीत हुँदा पनि कष्टहरू सबै अनिवार्य नै हुने थिए। हजुरको दयागुणको लागि यी क्षमाले सखीको रूपमा रहेर सहयोग गर्दछिन्। यी दुवै (क्षमा र दया) गुणहरूले, हजुरको उभयपार्श्वमा विराजमान भएर रहने लक्ष्मीदेवी र भूदेवीको प्रतीकको रूपमा रहेर अलग गर्न नसकिने सम्बन्धको साथमा मातृमूर्तिको रूपमा सधैं विजयलाई प्राप्त गरून्।।

यहाँ भगवान्‌ले गर्ने सृष्ट्यादिव्यापारहरूको लागि यो क्षमागुण कसरी प्रेरक बन्दछ? भन्ने यौटा सानो सन्देह उत्पन्न हुन सक्छ। प्रभुमा यो क्षमागुण हुन्नथ्यो भने प्रलय पछि उहाँले पुनः सृष्टि गर्नुहुनेथिएन भनेर समाधान ग्रहण

गर्नुपर्दछ। किन? भन्दा—मानवहरूमा पापप्रवृत्ति अत्यन्तै उत्कट भएर बढ्दाखेरि नै भगवान्‌ले प्रलयको व्यवस्था गरेर समस्त सृष्टिलाई उपसंहार गर्नुहुन्छ। पुनः केही समयपछि उनीहरूको पापलाई दयापूर्वक क्षमा गरेर नै पुनः सृष्टि गर्नुहुन्छ। यौटा बालकपुत्रको दुष्टतालाई पिताले सहन गर्न नसकेर उसलाई पीडा दिएर केही दिन बन्धनमा राखे पनि स्वयं क्षमागुणले युक्त छ भने पुनः उसलाई बन्धनबाट छोडेर पालन—पोषण गर्दछ भन्ने विषय सहजरूपमै अनुभवसिद्ध छ।।

त्यसैगरी परमात्माले पनि पूर्वापराधहरूलाई क्षमा गरेर पुनः सृष्टि—स्थित्यादि व्यापारको व्यवस्था गर्नुहुन्छ भन्ने महापुरुषहरूको समाधान हो। वास्तवमै परमात्माले स्वतन्त्रबुद्धिको साथमा अब यिनीहरूलाई फेरि सृष्टि गर्दिन भनेर मौन रहने हो भने संपूर्ण जीवराशि प्रकृतिमा लीन भएर शरीर—इन्द्रियहरूकै विना अचित्प्राय बनेर रहनुपर्ने हुन्थ्यो। यसै क्षमागुणले, भगवान्‌को हृदयमा निरूढ भएको स्वतन्त्रभावनालाई धक्का दिएर उहाँ (परमात्मा) लाई सृष्टिको लागि उन्मुख बनायो भन्ने यस श्लोकको तात्पर्य हो।।१।।



*पापानां प्रथमोऽस्म्यहं भवतिन्त्रेच्छास्त्रं प्रमाणं परं*
*श्रीरङ्गेश! न विद्यतेऽत्र विशयः, सन्त्येव ते साक्षिणः।*
*पृष्ट्वा तानधुना मयोदितमिदं सत्येन गृह्येत चेत्*
*सत्यंह्युक्तमिति क्षमस्व भगवन्! सर्वं तदस्मत्कृतम्।।२।।*

**विवरण-** *"हे भगवन्"!* भनेर यहाँ श्रीरङ्गनाथ भगवान्लाई सम्बोधन गर्नमा यौटा वैशिष्ट्य छ। *'भगवान्'* भन्ने पद, परमात्माको लागि बाहेक अरुको लागि लागु हुँदैन भनेर श्रीपराशरमहर्षिले विष्णुपुराणमा बताउनुभएको छ।।

*"तत्र पूज्यपदार्थोक्तिपरिभाषासमन्वितः।*
*शब्दोऽयं नोपचारेण ह्यन्यत्रह्युपचारतः"।।*

*पूज्यपदार्थोक्ति*– भनेको व्युत्पत्ति हो। *परिभाषा*– भनेको रूढि हो। यी दुवै पद्धतिको अनुसार हेर्दा पनि *'भगवान्'* शब्द, प्रधानतया श्रीमन्नारायणकै विषयमा समन्वित हुन्छ। यदि अन्यदेवताहरूको विषयमा र महर्षिहरूको विषयमा यो पद प्रयोग भएको देखिन्छ भने यो पद द्वारा बताइने गुणहरू लेशमात्र पनि उहाँहरूमा भएको हुनाले प्रयोग गरिएको हो भनेर भावना गर्नुपर्दछ। वास्तवरूपमा त्यो पदद्वारा बोलाउने (व्यवहारगर्ने) योग्यता

श्रीमन्नारायणमा नै हो। श्रीभाष्यको प्रारम्भमा नै उक्त विषयलाई श्रीभगवद्रामानुचार्यस्वामीजीले *"तस्मादन्यत्र तद्गुणलेश योगादौपचारिक: अनेकार्थकल्पनायोगात्, भगवच्छब्दवत्"* भनेर आज्ञा गर्नुभएको छ। त्यसमाथि व्याख्यानकर्ता श्रीश्रुतप्रकाशिकाचार्यले त्यहाँ विष्णुपुराणको अर्को श्लोक पनि प्रमाणको रूपमा देखाउनुभएको छ।।

*"ज्ञानशक्तिबलैश्वर्यवीर्यतेजांस्यशेषत:।*
*भगवच्छब्दवाच्यानि विना हेयैर्गुणादिभि:।।"*

ज्ञान–शक्ति–बल–ऐश्वर्य–वीर्य–तेज यी छ गुणहरूले पूर्ण रहेर काम क्रोधादिदुर्गुणहरूले अणुमात्र पनि रहित भएर प्रकाशमान रहनेवाला व्यक्ति नै भगवच्छब्दवाच्य हो भन्ने उक्तश्लोकको भाव हो। पूर्णरूपेण यी गुणंहरू परमात्मामा बाहेक अन्यत्र रहँदैनन्।।

हे श्रीरङ्गनाथ! हजुर यसरी भगवच्छब्दवाच्य एवं सर्वगुणपरिपूर्ण हुनुहुन्छ। अब म पापिष्ठहरूमा सबैभन्दा पहिलो छु। सद्गुणहरूले गर्दा हजुर एकमात्र अद्वितीय महापुरुष हुनुहुन्छ। त्यसैगरी पापहरूको प्रभावले गर्दा म पापीहरूमा अग्रगण्यको रूपमा रहेको हुनाले असदृश नै छु। *"शास्त्र"* नामक नाप्ने डोरी (स्केल) परमप्रमाण हो

भनेर मान्ने हो भने त्यसै अनुसार हामी दुवैको विषयमा यो निर्णय गर्न मिल्छ। हजुरमा भएका सबै महागुण हुन्, ममा भएका सबै पापहरू नै हुन् भनेर शास्त्रले नै निर्धारित गरेर बताउँदै छ। "तैंले यी पापहरू गर्दा के शास्त्रले देख्यो र? के त्यसको आँखा छन् र? भनेर भन्नुहुन्छ कि? सूर्य चन्द्र आदि सबैजना यस विषयमा प्रत्यक्ष साक्षी छन्। विशेषगरी मनुस्मृतिकर्ताले मानवहरूको चरित्रलाई दृष्टिमा राखेर नै साक्षीहरू चौध (१४) जना छन् भनेर एउटा श्लोकमा विवरण दिनुभएको छ–

*"..........................स्वश्चैवान्तरपूरुष:।*
*द्यौर्भूमिरापो हृदयं चन्द्रार्काग्नियमानिला:।।*
*रात्रिस्सन्ध्ये च धर्मश्च वृत्तज्ञास्सर्वदेहिनाम्।।"*

आफ्नो अन्तर्यामीको रूपमा रहनेवाला परमात्मा आकाश–भूमि–जल–हृदय–चन्द्रमा–सूर्य–अग्नि–यमराज –वायु–रात्री–प्रातस्सन्ध्या–सायंसन्ध्या–धर्म यी सबै, मानवले गरेका कर्महरूको विषयमा साक्षी हुन् भनेर मनुले बताउनुभएको छ। मैले कँही रहस्यमा रहेर कसैले थाहा नपाउनेगरी पापकृत्यहरू गर्छु भन्दा पनि सर्वदेश र सर्वकालहरूमा व्याप्त भएर रहने यी देवताहरूले थाहा

नपाउनेगरी त केही पनि रहन्न। मैले होइन भनेर छिपाए पनि ती कर्म हरू छिप्दैनन्। बिरालोले आँखा बन्द गरेर दूध पिए झैं मैले त्यतिबेला प्रवर्तन गरें। तर यतिबेला नछिपाईकन भएको वास्तवलाई हो भनेर स्वीकार गर्दै छु। हजुरले सन्देह गर्नुपर्ने आवश्यकतै छैन। चाहेदेखि ती देवताहरूलाई नै सोधेर जानकारी लिनुहोस्। उहाँहरूले पूरै अनादिकालदेखि मैले गरेको अनन्तकोटि पापहरूको सूची (लिष्ट) हजुरलाई देखाइदिनुहुन्छ। मैले आफैं स्वीकार गरेर बताएका सबै कुराहरू यथार्थ नै हुन् भनेर ऋजु हुने छन्। पक्राउमा आएको चोरले, आफूले गरेको सत्य हो भनेर सत्य बोल्नु विशेषकुरा नै मानिन्छ। यसरी सत्य बोल्ने यौटा गुण मात्र भए पनि ममा भएको हुनाले यसै गुणलाई अवलम्बन गरेर मलाई क्षमा गर्नुहोस्। महोदार हजुरको लागि यो कुनै असाध्य विषय होइन। आफूले गरेका पापहरूको विषयमा पश्चात्ताप गरेर हजुरलाई नै रक्षकको रूपमा विश्वास गरेर प्रार्थना गर्दैछु। यसरी यथार्थता भएको भक्तमा हुनुपर्ने आर्ति, प्रस्तुतश्लोकमा बताइयो।।२।।



*त्वत्क्षान्तिः खलु रङ्गराज! महती, तस्याः पुनस्तोषणे*
*पर्याप्तं न समस्तचेतनकृतं पापं, ततो मामकम्।*
*लक्ष्यं नेति न मोक्तुमर्हसि, यतः कुत्रापि तुल्यो मया*
*नान्यस्सिध्यति पापकृत्, तदधुना लब्धं तु नोपेक्ष्यताम्।।३।।*

**विवरण**- हे स्वामिन्! हजुर रङ्गराज हुनुहुन्छ। *"राजा प्रकृतिरञ्जनात्"* भनेका छन् नीतिशास्त्रवेत्ताहरूले। प्रजाहरूलाई कष्ट नदिईकन रञ्जित (प्रसन्न) गराउनेवाला व्यक्ति नै राजा हो। क्रूर बनेर कुनै एक व्यक्तिलाई हिंसा गऱ्यो भने त्यस व्यक्तिलाई राजा भन्दैनन्। हजुरले *'रङ्गराज'* भनेर प्रसिद्धि प्राप्तगर्नमा हजुरको क्षमागुण नै कारण हो। त्यो क्षमागुण महान् छ। लोकमा भएका सबै मानवहरूको पापहरूलाई क्षमा गर्दा पनि त्यस क्षमागुणलाई तृप्ति मिलेको छैन। उपवास गरेर धेरैदिनसम्म भोकाएको व्यक्तिलाई चार सिता (भात) ले के पुग्दछ र? अझै धेरैजना पापात्माहरू आएर क्षमा गर्नुहोस् भनेको सुनेर मैले हजुरको सन्निधिमा आएर आश्रय लिएँ। यो महापापी छ, अनेकौं असह्यापचार गरेको यसलाई मैले क्षमागर्न सक्दिन भनेर हजुरले मलाई छोडिदिनुभयो भने हजुरलाई नै ठूलो हानि हुने छ। हजुरको क्षमागुणलाई प्रकाशमा ल्याउने म जस्तै व्यक्तिहरूले हो।

मलाई क्षमा नगरेर छोडिदिने हो भने म जस्तो अर्को अधिकारी हजुरलाई कँही पनि कहिल्यै पनि मिल्नेछैन। मिलेको यो राम्रो सदवकाशलाई नगुमाउनुहोला। फलाना व्यक्तिलाई रक्षा गर्नुभयो भन्ने प्रतिष्ठा मबाट नै हजुरलाई चिरस्थायी भएर रहने छ। सबैजनालाई रक्षा गर्नु एकतरफ, मलाई रक्षा गर्नु अर्को तरफ हो। अर्थात् अरु सबैले गरेको पापको समूहको बराबर पाप त मैले नै गरेको छु।।३।।



*पुण्यं पापमिति द्वयं खलु, तयोः पूर्वेण यत्साध्यते*
*तत् त्वद्विस्मृतिकारकं तनुभृतां रङ्गेश! सञ्जायते।*
*पाश्चात्यस्य तु यत्फलं, तदिह ते दुःखच्छिदः स्मारकं*
*तेनानेन कृतं तदेव शिशुनेत्यस्मत्कृतं क्षम्यताम्।।४।।*

**विवरण-** हे श्रीरङ्गनाथ! सबै मानवहरूले उज्जीवन प्राप्त गरुन् भन्ने उद्देश्यले वेदशास्त्र नामक प्रवृत्तिनियमावलीको पट्टिका (सूची) लाई विस्तृतरूपमा तयार गरेर हजुरले हामीहरूलाई प्रदान गर्नुभयो। त्यसमा पुण्य र पाप भन्ने दुई मार्गहरूलाई देखाएर ''यसरी प्रवर्तन गऱ्यौभने तिमीहरूले समस्त सुखहरू प्राप्त गर्नेछौ। यो देखि विपरीत ढंगले प्रवर्तन गऱ्यौ भने कष्टहरूको भागी

बन्ने छौ'' भनेर हजुरले प्रबोधन गर्नुभएको छ। तर यसबाट हजुरलाई नै हानि छ भन्ने कुरा शायद हजुरले ध्यान दिनुभएन। किनभन्दा–मैले बताउँछु हजुरले सुन्नुहोस्।।

पुण्यहरू गरेपछि मिल्ने फल त सुखानुभव नै हो। त्यसैगरी पुण्यमार्गमा परेको कुनै पनि मानवले सुखानुभवमा पूर्णरूपले निमग्न भइसकेपछि के हजुरलाई एक पल्ट पनि स्मरण गर्दछ त? गर्दैन। झन् भुल्दछ। कुनै समयमा कुनै एक सत्पुरुषले ''तँलाई यत्रो सुख र ऐश्वर्य भगवान्ले दिएको त होनि!'' भनेर स्मरण गराउँदा पनि ''छी त्यो को होर? मैले आफै नै कष्ट गरेर सम्पादन गरेको हो'' भनेर आफ्नो प्रयोजकत्वलाई नै त्यो पुण्यकर्ता मानवले ठूलो वैभवकोरूपमा बताउँदछ। हजुरले उदारभावको साथमा हात–पाउहरू दिएर सृष्टि गरेर शास्त्रहरू पनि प्रदान गरेर यी जीवहरूको योगक्षेमको लागि परिश्रम गरेर के फल प्राप्त गर्नुभयो त? तर त्यो जीवले हजुरलाई स्मरण गर्न त टाढै रहोस्। कम से कम कृतज्ञता पनि देखाएन।। यो वास्तवलाई ध्यानमा राखेर नै म पुण्य मार्गमा चल्न छोडें। त्यो पुण्यबाट मिल्ने सुखहरूमा डुबियो भने हजुरलाई नै भुलिन्छ। त्यही भएर दोस्रो पापमार्गलाई नै मैले अवलम्बन गरें। जति पाप गऱ्यो त्यति नै कष्टहरू मलाई मिल्छन्।

मिलुन् केही फिक्री छैन। त्यतिबेला नै मैले "भगवन्! मलाई पार लगाउनुहोस्" भनेर बार बार स्मरण गर्ने छु। त्यही भएर हजुरलाई नभुलीकन निरन्तर स्मरण गर्नको लागि कष्टप्रदान गर्ने पापमार्ग नै उत्तम हो भनेर मैले रोजें। त्यही नै गरीराखेको छु। के यो गल्ती हो र?।।

पहिला अनेक कष्टहरूको वशमा परेर आफ्ना पुत्र पाण्डवहरूका साथमा जंगलमा गएकी महारानी कुन्तीदेवीले यस्तोगरी अनुसन्धान गर्नुभएको थियो– *"विपदः सन्तु नः शश्वत्", "यासु सङ्कीर्त्यते हरिः"* हामीलाई सधैं यसैगरी आपत्तिहरू आउँदैरहुन् भनेर मैले चाहन्छु। त्यही भएर हामीले बार बार श्रीकृष्णजीलाई स्मरण गर्दछौं। ती महानुभाव श्रीकृष्णजीले आएर हामीहरूको रक्षा गर्नुहुन्छ। त्यस्तो नभएर दुर्योधनादि हरूले झैं ऐश्वर्यसुखमा फसेको भए हामीलाई श्रीकृष्णजीको दर्शन के बार बार मिल्ने थियो र? भन्ने कुन्तीमहारानीको हृदयको भाव हो।। हे स्वामिन्! श्रीरङ्गनाथ! त्यही रीतिले मैले पनि हजुरलाई भुल्न नचाहेर कष्टहरू खोज्दै पाप गर्दै छु। त्यही भएर त्यो पहिलो पुण्यकर्ता भन्दा म नै राम्रो व्यक्ति हुँ भन्ने मानेर मैले गरेका विविधापचारहरूलाई क्षमा गर्नुहोस्। मलाई यो दुःखसमुद्रबाट पार लगाउनुहोस्।।४।।



*पुण्यं यत्तव पूजनं भवति चेत्, तत्कर्तुरिष्टे कृते*
*तत्स्यात् रङ्गपते! कृतप्रतिकृतं, सर्वेऽपि तत्कुर्वते।*
*पापंचेदपराध एव भवतस्तत्कर्तृसंरक्षणे*
*क्षान्तिस्ते निरुपाधिका निरुपमा लक्ष्येत, तत् क्षम्यताम्।।५।।*

हे रङ्गपते! शास्त्रको अनुसार पुण्य भनेको हजुरको प्रीतिको हेतु बन्ने सेवा गर्नु हो। त्यो देखि भिन्न पाप हो भनेर महापुरुषहरूले बताउँदा सुनेको थिएँ। *''यत्त्वत्प्रियं तदिह पुण्यम् अपुण्यमन्यत्''* यो कूरत्ताल्वान्को निर्वचन हो। धेरैजना, लोकमा त्यो पुण्यको आचरण गरेर ''हामी भगवत्प्रीतिपात्र बन्यौं'' भनेर हर्षविभोर हुने गर्दछन्। आफ्नो ठूलो वैभव बताउँदछन्। उनीहरूको पुण्यदेखि प्रसन्न भएर उनीहरूलाई हजुरले पनि भोगभाग्यहरू प्रदान गर्नुहुन्छ। वास्तवमा हजुरको पनि यसमा कुनै महत्त्व छैन। उनीहरूको पनि वैभव केही छैन। किन? भन्दा–यसलाई कृतप्रतिकृत भन्दछन्। अर्थात् लेनदेन जस्तो हो। कसैले गरेको परिश्रमको भृति दिएजस्तै हो भनेर भावना गर्नुपर्दछ। उसले गरेको पूजाको फल प्रदान गरेकोहुनाले यसमा हजुरको औदार्य केही पनि छैन। यता भृत्यहरू र उता यजमान (मालिक) हरू सबैजनाले लोकमा गर्ने काम यही त होनि! यसमा

आश्चर्य के छ र? ''मैले परिश्रमपूर्वक गरेको पुण्यको प्रतिफल लिएँ। भगवान्ले मलाई त्यत्तिकै दिएको होइन'' भनेर पुण्यकर्ताले अहंकारको साथमा बोल्दछ। त्यतिबेला हजुरको गौरव जान्छ। हजुर लघु बन्नुहुने छ।।

रावण धेरै नै आत्माभिमानी थियो। उसलाई कसैले ''शङ्करजीको वरप्रभावले त हो। तँमा के महत्त्व छ र? उहाँले वरहरू नदिएकोभए के तँमा तीनै लोकहरूलाई जित्नसक्ने शक्ति रहन्थ्यो र?'' भनेर आक्षेप गरिदिएछ। यसमाथि रावणले दिएको समाधान के हो सुन्नुहोस्।

*''समुत्क्षिपन् यः पृथिवीभृतां वरं परप्रसादस्य चकार शूलिनः।*
*त्रसत्तुषाराद्रिसुतासमभ्रम–स्वयंग्रहाश्लेषसुखेन निष्क्रयम्''*

(शिशुपालवध–१–५०)

यसरी बताएका छन् माघकविले *''शिशुपालवध''* काव्यमा। मैले गरेको तपस्याको फलको रूपमा शंकरजीले मलाई वर दिनुभयो। र पनि मैले त्यत्तिकैमा (केही पुरुषार्थ नगरीकन) वर लिएको होइन। त्यसको बदलामा उहाँको लागि अतिप्रिय लाग्ने काम गरेर अर्थात् प्रत्युपकार गरेर ऋण चुकाएको छु। त्यो केहो त? भन्दा–उहाँले वर दिने बित्तिकै म कैलासबाट तल उत्रिएर आएर मेरा बीस हातहरूद्वारा एकैपल्ट कैलासलाई उठाएर हल्लाइदिएँ। यति

गर्नेबित्तिकै पर्वतमा रहेकी पार्वतीजी तर्सिनुभयो र डराउँदै आफै दौडेर गएर शङ्करजीलाई आलिङ्गन गर्नुभयो। आफ्नो इच्छा विना नै प्राप्त भएको त्यो आलिङ्गनसुखले प्रसन्न भएर शङ्करजीले महानन्दलाई प्राप्त गर्नुभयो। मैले यस्तो काम गरेको हुनाले शंकरजीले साधुवाद ज्ञापन गर्नुभयो। यसरी शङ्करजीले गरेको वरप्रदानको प्रत्युपकारको रूपमा मैले पनि यस्तो गरेको हुँ। यो रावणले बताएको समाधान हो।।

त्यसैगरी हजुरलाई उद्देश्य गरेर अमुक महायज्ञ गर्‍यौं, हजुरलाई मन्दिर बनाइदियौं, हजुरको विषयमा महाकाव्य एवं स्तोत्रहरूको रचना गर्‍यौँ त्यही भएर हजुरले आफूहरूलाई श्रेयस् प्रदान गर्नुभयो भनेर भन्नेवाला पनि केहीजना महानुभावहरू लोकमा हुन्छन्। यसरी *'कृतप्रतिकृतम्'* भन्ने पद्धतिले पुण्यवान्हरूलाई हजुरले फलप्रदान गर्नुमा कुनै आश्चर्य छैन। त्यसले हजुरलाई कुनै प्रतिष्ठा आपादन (सम्पादन) गर्दैन।।

मैलेत सन्तोषयुक्त बनाउनमा हेतु बन्ने पुण्यलाई छोडेर हजुरको विषयमा अपराधरूप महापापराशिलाई सम्पादन गरेको छु। त्यही भएर यस्तो अपराधीको रूपमा रहेको मलाई निर्हेतुकरूपमा क्षमा गरेर रक्षा गर्नुभयो भने मात्र

हजुरको प्रभाव जगद्विदित हुने छ। यस्तो क्षमागुणले सम्पन्न व्यक्ति अर्को छैन! असदृश दैव हुनुहुन्छ भनेर हजुरलाई प्रसिद्धि मिल्ने छ। त्यसको लागि भए पनि म जस्तो व्यक्तिलाई नै हजुरले रक्षा गर्नुपर्दछ, पुण्यवान्हरूलाई होइन भन्ने तात्पर्य हो।।५।।



*न द्वित्राणि कृतान्यनेन, निरयैर्नालं पुनःकल्पितैः*
*पापानामिति मत्कृते तदधिकान् कर्तुं प्रवृत्ते त्वयि।*
*तेभ्योऽप्यभ्यधिकानि तान्यहमपि क्षुद्रः करोमि क्षणात्*
*तद्यत्नस्तव निष्फलः खलु भवेत् तत्ते क्षमैव क्षमा।।६।।*

**विवरण**- हे प्रभो! श्रीरङ्गनाथ! मलाई जसरी भए पनि पूर्णरूपेण दण्ड दिएरै छोड्छु भन्ने दृढसंकल्पलाई हजुरले छोडिदिँदा राम्रो हुन्छ। किन? भन्दा—हामी दुवैले स्पर्धा गर्ने हो भने बाजी लगाउँदा हजुरले विजय प्राप्त गर्न सक्नुहुन्न। मैले गरेका पापहरू र गर्दै भएका पापहरू दुई—तीन मात्र होइनन्। हजारौँ एवं लाखौँभन्दा पनि बढी छन्। ती सबै पापहरूको उचितरूपमा हजुरले मलाई दण्ड दिनको लागि आजसम्म सृष्टि गरेका नरकलोकहरू पर्याप्त हुँदैनन्। मैले गरेका पापहरूलाई र ती नरकहरूलाई संख्यापूर्वक

सूची (लिष्ट) बनाएर हेर्ने हो भने हजुरलाई नै थाहा हुन्छ। त्यतिबेला हजुरले, ममाथि उत्पन्न हुने क्रोधावेशले गर्दा अरु अनेकौं नरकहरूको सृष्टिको लागि उद्यम गर्न सक्नुहुन्छ। कति कति सृष्टि गरिरहनुहुन्छ र? एकतरफ हजुरले ती नरकहरूलाई सृष्टि गर्दा अलिकति समय लाग्न सक्दछ। त्यसको लागि हजुरलाई अलिकति परिश्रम पनि पर्ने छ। तर अनेकौं पापहरूलाई क्षणकालमा सृष्टिगर्ने विषय मेरो लागि अत्यन्त सुलभ छ।।

''घोर नरकबाधाहरू अनुभव गर्न के तँलाई कष्ट हुँदैन र?'' भन्नुहोला। हुँदैन। यो त मलाई बानी परिसक्यो। *''सर्व सहे मे सहजं हि दुःखम्''* भनेर श्रीयामुनाचार्यस्वामीजीले बताए अनुसार अनेकौं कष्टहरूलाई सहन गर्न सक्ने कठोर स्वभाव अनादिकालदेखि ममा सहज बनिसक्यो। त्यही भएर अब अगाडि भए पनि हजुरले आफ्नो मनलाई बदलेर ''तेरा सबै अपराधहरूलाई क्षमा गरिदिएँ भनेर भन्नुहोस्। त्यो हजुरको यौटै क्षमागुणले यो संकटपरिस्थितिबाट हजुरलाई र मलाई दुवैलाई निश्चिन्त बनाएर पार लगाउँदछ। त्यस्तो गर्नुभयो भने हजुरको गौरव बढ्ने छ। मलाई उज्जीवन प्राप्त हुनेछ। यही नै उभयतारक मार्ग हो।।६।।



सम्भूयाखिलपातकैर्बहुविधं स्वं स्वं फलं दीयतां
सर्वं सह्यमिदं मम त्वयि हरे! जाग्रत्यपि त्रातरि।
दुःखाक्रान्तमवेक्ष्य मामिह जनो दुष्टाशयस्त्वद्गुणान्
क्षान्त्यादीन् प्रति दुर्वचं यदि वदेत् सोढुं न तच्छक्यते।।७।।

**विवरण**- मैले गरेका अनेकप्रकारका पापहरू छन्। तीमध्ये पापहरूको क्रूरत्वको अनुसार नानाप्रकारका नरकानुभवहरू विधान गरिएकाछन्। यी पापफलहरू एउटा पछि अर्को भनेझैं नभएर एकैपल्ट सबै ममाथि आएर आक्रमण गर्न सक्छन्। एककालमा नै सबै अनुभव गर्नुपर्दछ भनेर यमराजले क्रूरदण्डको विधान गर्न सक्छन्। तथापि मलाई केही आपत्ति छैन। कठोरस्वभाववाला मेरोलागि धेरै समयबाट यी कष्टहरूको अनुभव सहजै भैसकेकोहुनाले सबै प्रकारका विपत्तिहरूलाई मैले सहन गर्न सक्छु। तर लोक राम्रो छैन। लोकमा भएका व्यक्तिहरूमा अपवाद फैलाउने स्वभाव सहजरूपमै रहन्छ। निरन्तररूपमा मैले अनुभव गर्दै आएका कष्टहरूलाई देखेर उनीहरूले मौनरूपमा नबसेर हजुरलाई नै निन्दा गर्नेछन्। कसरी दूषण गर्दछन् त भन्दा– ''भगवान् त सर्वरक्षक हुनुहुन्छ 'हरि' भन्ने उहाँ को

बिरुदनाम छ। *"हरिर्हरति पापानि दुष्टचित्तैरपि स्मृत:"* भन्ने शास्त्रवचनले दुष्टहरूको पापलाई पनि स्मरण गर्नाले मात्र उहाँले हरण गरिदिनुहुन्छ भनेर वैभवको साथमा बताएको छ। तर यो भक्तले विविध दु:खहरूलाई अनुभव गर्दा पनि किन आएर रक्षा गर्नुहुन्न त"? भनेर मेरा कष्टलाई देख्ने व्यक्तिहरूले हजुरलाई दूषण (निन्दा) गर्ने छन्। उनीहरूको मुखलाई कसैले पनि बन्द गर्न सक्दैन। मैले अनेकन् कष्टहरूलाई अनुभव गर्न सक्छु तर हजुरमाथि अपवाद आयो भने देखेर सहन गर्न सक्दिन। त्यही भएर हजुरले यो अपराधीलाई दण्ड नै दिनुपर्छ भन्ने आफ्नो दृढ अभिसन्धिलाई त्यागेर सम्पूर्णरूपले मलाई क्षमा गरेर रक्षा गर्नुभयो भने हजुरलाई त्यो अपवाद आउने नै छैन। हजुरको प्रतिष्ठा पनि बढ्ने छ। "मेरो स्वामी क्रूर हुनुहुन्न, महोदार हुनुहुन्छ" भनेर मैले उनीहरूको मुख बन्द गराइदिने छु। यसरी हजुरले मलाई रक्षा गर्नुहुन्छ भने हजुरको नामलाई मैले सुप्रतिष्ठित गरिदिन्छु।।७।।





*क्षान्तिर्नाम वरो गुणस्तव महान् श्रीरङ्गपृथ्वीपते!*
*सर्वं सह्यमिदं मम त्वयि हरे! जाग्रत्यपि त्रातरि।*
*दुःखाक्रान्तमवेक्ष्य मामिह जनो दुष्टाशयस्त्वद्गुणान्*
*क्षान्त्यादीन् प्रति दुर्वचं यदि वदेत् सोढुं न तच्छक्यते।।८।।*

**विवरण**- हे श्रीरङ्गराज! हजुरमा भक्तहरूको अनेक अपराधहरूलाई क्षमा गर्नसक्ने महागुण छ भनेर महापुरुषहरूले र शास्त्रहरूले बताउँदाखेरि सुनेको मात्र छु। कुनबेला कसलाई कसरी क्षमा गर्नुभयो भन्ने विषय मैले जान्दिन। अन्धकार रहँदाखेरि नै बत्तीको प्रकाश रहन्छ। त्यो (अन्धकार) नहुँदा (प्रकाशमा) बत्ती रहेता पनि उसको प्रकाश खासै थाहा हुँदैन। त्यतिबेला त्यो भए पनि नभएकै बराबर हुन्छ। त्यसैगरी दानलाई ग्रहण गर्नेवाला व्यक्ति मिल्दाखेरि नै दातामा भएको औदार्य प्रकाशमा आउँछ। यसरी हेर्दाखेरि श्रीवैकुण्ठमा अपराध गर्ने व्यक्तिहरू रहँदै रहन्नन्। त्यही भएर हजुरमा क्षमागुण रहँदा पनि छ भन्ने कुरा कसैलाई वहाँ थाहा हुनै पाउँदैन।।

यस भूमण्डलमा हजुर अवतार लिएर आउँदा थोरै अपचार गरेका एक—दुई जनालाई क्षमा गरेता पनि कालक्रमेण त्यो प्रकाशमा आउँदैन। नाममा आउँदैन। अतः मैले यही

नै काम लिएर अनेक प्रकारका महापापहरू गर्नको लागि व्रतजस्तै यौटा नियम लिएँ। यस्तो मलाई क्षमा गरेर रक्षा गर्नुभयो भने लोकमा हजुर विशाल क्षमागुणले युक्त हुनुहुन्छ भन्ने प्रतिष्ठा हजुरलाई मिलोस् भन्ने मेरो प्रधान उद्देश्य हो। हजुरलाई मात्र होइन, मलाई पनि यसबाट लोकप्रसिद्धि मिल्छ। ''भगवान्को क्षमागुण यसै व्यक्तिबाट प्रसिद्ध भयो'' भनेर लोकमा भएका व्यक्तिहरूले मलाई पनि स्मरण गर्नेछन्। त्यही भएर मलाई क्षमा गरेर हजुरको क्षमागुणलाई नित्य उज्ज्वल बनाउनुहोस्।।८।।



*मत्पापक्षपणाय योजयसि चेत् घोरेण दण्डेन मां*
*रङ्गाधीश्वर! केवलाघकरणात् दुःखं मम स्यान्महत्।*
*तद्द्रष्टुर्भवतोऽपि दुःखमतुलं घोरं दयालो! भवेत्*
*तस्मात् तेऽपि सुखाय मत्कृतमिदं सर्वं त्वया क्षम्यताम्।।९।।*

**विवरण**- हे श्रीरङ्गनाथ! मलाई क्षमा गर्नुहोस् भनेर मैले अनुरोध गरेको हजुरको सुखको लागि नै हो। किन भन्दा–हजुरले अरूको दुःखको अनुभव गर्दा हेरेर रहन सक्नुहुन्न। हजुर धेरै नै कोमल मन भएका दयाशाली हुनुहुन्छ। श्रीमहर्षि वाल्मीकिजीले श्रीरामायणमा ***''व्यसनेषु मनुष्याणां भृशं भवति दुःखितः''*** भनेर बताउनुभएको

छ। कष्टहरूले गर्दा दुःखी भएका व्यक्तिहरूलाई देख्दा हजुर उनीहरूभन्दा पनि बढी ''ओहो! अरेरे!'' भनेर दुःखी बन्नुहुन्छरे। हजुर त्यस्तो दयावान् हुनुहुन्छ भनेर हजुरको नैजस्वरूपलाई महर्षिले व्यक्त गर्नुभएको छ। त्यस समयमा (त्रेतायुगमा) सबै प्रजाहरूले हजुरको यस्तो दयागुणलाई ग्रहण गरेका थिए।।

अब मेरो विषयमा परामर्श गर्ने हो भने केवल पापै पाप मात्र गरेको म दुष्ट हुँ। सर्वस्वामीको रूपमा विराजमान हजुरले, मेरो लागि घोर नरकयातनाहरू नै विधान गर्नुपर्ने हुन्छ। ती नरकबाधाहरूलाई मैले सहन गर्न नसकेर आर्त्तिंदा के हजुरले हेरीरहन सक्नुहुन्छ र? त्यो हजुरलाई साध्य हुँदैन। त्यतिबेला कष्टानुभव गर्ने मलाई भन्दा पनि हजुरलाई बढी दुःख हुने छ। त्यो दुःखलाई हजुरले भरण गर्न सक्नुहुन्न। अतः हजुर निश्चिन्तरूपमा सुखी रहन चाहनुहुन्छ भने मेरो पापहरूलाई क्षमा गरेर रक्षा गर्नुहोला। विगतका कुराहरूलाई बिर्सिदिने हो भने हजुरको र मेरो दुवैजनाको लागि कल्याण हुने छ। धेरै जिद्द गरेर क्रोधपूर्वक मलाई दण्ड दिनुभयो भने म रुँदाखेरि हेर्न नसकेर मेरो पीडाले द्रवित भएर हजुर पनि दुःखी बन्नुहुने छ। त्यही भएर खोजेर दुःखलाई हजुरले ग्रहण नगर्नुहोला भन्ने तात्पर्य हो।।९।।



*देव! त्वां शरणं प्रपन्नमपि मां दुःखान्यनन्याश्रयं
बाधन्ते यदि सर्वपापनिवहात् त्वां मोक्षयिष्याम्यहम्।
इत्युक्तं तव वाक्यमर्थविधुरं जायेत यद्वा भवान्
तत्राशक्त इति प्रथेत हि ततो मां रक्षतु त्वत्क्षमा।।१०।।*

**विवरण**- हे प्रभो! श्रीरङ्गनाथ! हजुर बाहेक मेरो अर्को कोही पनि रक्षक छैन भन्ने भावनाको साथमा म हजुरको शरणमा पर्दै छु। हजुरको प्रभावले मेरा सबै कष्ट हरू हटे भने मलाई कसैले पनि पीडा दिन सक्दैन भन्ने दृढ विश्वासको साथमा हजुरको आश्रय लिँदै छु र पनि यी कष्टहरू मेरो लागि अनिवार्य भैराखेका छन्। ''मेरो आश्रय ग्रहण गर्ने व्यक्तिको पापफलहरूलाई दूर गरिदिन्छु'' भनेर हजुरले उपदेश गरेको वचन के असत्य हो र? हजुरको वचनहरूको अमूल्य मान्यता छैनर? कुनै समयमा द्रौपदीजीसंग हजुरले प्रतिज्ञाको रूपमा बोलेका वचनहरू मलाई स्मरण हुँदैछन्।।

*''द्यौः पतेत् पृथिवी शीर्येत्
हिमवान् शकलीभवेत्।
शुष्येत्तोयनिधिः कृष्णे!''
न मे मोघं वचो भवेत्''।।*

हे द्रौपदी! आकाश टुक्रा भएर खसोस्। भूमि शीर्ण

भएर जाऊन्। हिमालय विस्फोट भएर टुक्रा बनोस्। समुद्र सुकेर जाओस्। तर कुनै परिस्थितिमा पनि मैले बोलेको वचनलाई उल्लङ्घन गर्दिन। यसरी हजुरले उनीसंग बताउनुभएको थियो न!।।

त्यसैगरी *"सर्वपापेभ्यो मोक्षयिष्यामि"* भनेर चरमश्लोकमा अर्जुनलाई हजुरले बताएको विषय के मेरो विषयमा असत्य हो र? हजुरको आश्रय लिएपछि पनि मेरो कष्टहरू दूर नहुँदाखेरि हजुरको वचन असत्य हो भनेर शङ्का गर्न थालेको छु। अथवा, हजुरमा त्यत्रो शक्ति–सामर्थ्य वास्तवमै छैन कि भन्ने कुरा न बनोस्। त्यही भयेर हजुरले बोलेको वचनलाई दृढ बनाउनुहोस्। म असमर्थ होइन भनेर निरूपण गर्नुहोस्। मेरो आश्रय लिने व्यक्तिको कहिल्यै पनि दुर्गति हुँदैन भन्ने विषयलाई ऋजु गर्नुहोस्।। १०।।



*न त्वं क्षाम्यसि चेदिदं मम कृतं नास्त्यत्र काचित्क्षति:*
*पूर्वं यत्समभूत् तदेव हि पुनर्जायेत तज्जायताम्।*
*यद्वा स्यादधिकं च सोऽपि सुमहान् लाभोऽस्तु मे तादृश:*
*स्वामिन्! दासजनस्तवायमधिकं स्वैरेण दूरीभवेत्।।११।।*

**विवरण**- हे श्रीरङ्गनाथ! मैले जति नै अनुरोध गर्दा पनि हजुर स्वतन्त्र भएको हुनाले कोपको आवेशद्वारा "तँलाई क्षमा गर्दिन दण्ड दिएरै छोड्छु" भनेर जिद्द गर्नुहुन्छ

भने पनि मलाई केही हानि छैन। नयाँ आपत्ति पनि छैन। अनेक प्रकारका नरकका दुःखहरूको अनुभव गर्ने अभ्यास पूर्वकालदेखि नै मलाई बनिसकेको छ। फेरि पनि तिनै नरकबाधाहरूलाई त हजुरले विधान गर्नुहुने छ। त्यसको लागि म सिद्ध भएरै रहेको छु।।

अब हजुरले अत्यन्त रोषको साथमा ''तैंले कहिल्यै पनि मोक्ष प्राप्त गर्न नसक्नेगरी शाश्वतरूपमा तँलाई संसारकूपमा नै फ्याँकेर राखिदिन्छु'' भनेर आदेश गर्नुहुन्छ होला? त्यो पनि मेरोलागि राम्रै हो। त्यासबाट पनि मलाई लाभ नै छ। प्रारम्भदेखि नै स्वेच्छारूपले स्वतन्त्रभावनाको साथमा हजुरको वशमा नपर्नेगरी विमुख बनेर घुम्नेवाला मेरो इच्छा नै स्थिर भयो भन्ने मान्दछु। तर कौस्तुभरत्न जस्तो मानिने मजस्तो कुमार (पुत्र) लाई टाढा गर्नुभयो भने हजुरको लागि त शाश्वतरूपमा दुःख अनिवार्य हुने छ। लोकमा—एकजना पिताका धेरैजना पुत्रहरू रहँदा पनि एउटा पुत्र टाढै छ भने पुत्रविश्लेषले गर्दा त्यो पितालाई सन्तोष रहँदैन। हजुरलाई त्यस्तो स्थितिबाट टाढै रहन छ भने तुरुन्तै मलाई क्षमा गरेर हजुरको सान्निध्यमा लिनुहोस्। यो मेरो प्रार्थना हो।।११।।



*सोऽहं क्षुद्रतया जुगुप्सिततमं दुष्कर्म नित्यं स्मरन्*
*कुर्वन् काममशुद्धरीतिरभवं श्रीरङ्गपृथ्वीपते!।*
*एतत्ते महतो विशुद्धमनसा स्मर्तुं न युक्तं खलु*
*क्षान्त्या विस्मर तत्, ततोऽहमसुखान्मुक्तो भवेयं सुखी।१२।।*

**विवरण-** हे श्रीरङ्गनाथ! राजाको पुत्र राजा जस्तै नै हुन्छ। म पनि हजुरजस्तै नै हुँ। सहजरूपमा हजुरजस्तै परिशुद्धस्वभाववाला नै हुँ। तर अनादिकालदेखि यस प्रकृतिमा परेर क्षुद्र भएँ। छी छी भनेर अरु सबैले जुगुप्सा (निन्दा) गर्नेगरी पापकर्महरूको आचरण गर्ने नै मेरो संकल्प बन्यो। कुनै दिन पनि केही राम्रो कर्महरू गरौं भन्ने संकल्प ममा उत्पन्न भएन। यति मात्रै होइन। संकल्प गरेका सबै क्षुद्रकार्यहरू गरेरै छोडें। यसरी पूर्णरूपेण निहीन एवम् अपवित्ररीतिमा म परें। मलाई कसैले हेर्दा पनि, स्मरण गर्दा पनि उनीहरूलाई पनि मेरो पापले घेरिदिन्छ।।

''पवित्राणां पवित्रं यः'' भने अनुसार पवित्रपदार्थहरूलाई पनि पवित्रताको आपादन गरिदिने परमपवित्र हजुरले, परमनीच मलाई दण्ड दिनको लागि समय–समयमा पापहरूको परिगणना गर्नु उचित छैन। मलाई दण्ड दिऊँ भन्ने क्रोधलेगर्दा ''त्यो दिन यो पाप

गरिस्। अर्कोदिन भागवतहरूको विषयमा अपचार गरिस्'' भनेर यसरी मैले गरेका पापहरूलाई एक एक गरेर गनेर बस्नुहोला नि! तर सधै निर्मल स्वभावले युक्त भएर रहने वाला हजुरले आफूमा अपवित्रताको आपादन गर्नु के उचित होला र? स्मरणगर्ने बित्तिकै आफूलाई पनि स्पर्श गर्न खोज्ने मेरा पापहरूले हजुरलाई कलुषित नगरिदिउन्। त्यही भएर हजुरले मेरो विगत चरित्रलाई पूर्णरूपले भुल्नु नै श्रेयस्कर हुन्छ। बार–बार स्मरण गरेर झंझट मान्नु भन्दा क्षमा गरें भनेर ती मेरा पापहरूलाई भुल्दा राम्रो हुने छ। अशुद्ध पदार्थहरूलाई स्पर्श गरेर स्नान गर्नभन्दा स्पर्श नै नगर्दा राम्रो हुन्छ। त्यहीभएर मलाई दण्ड दिने सङ्कल्पलाई भुल्नुहोस्। म पनि हजुरको अनुग्रहद्वारा कष्टरहित भएर सुखी रहने छु।।१२।।



*तत्तत्कर्मफलानुरूपमखिलो लोकस्त्वया सृज्यते*
*तस्मात्कर्मवशंवदत्वमखिलं वक्तुं तवापि क्षमम्।*
*श्रीरङ्गेश्वर! तत्प्रशान्तिविधये क्षान्त्या निराकृत्य मे*
*सर्वं पातकमाशु दर्शय भवत्स्वातन्त्र्यमत्युज्ज्वलम्।।१३।।*

**विवरण-** हे स्वामिन्! वेदले हजुरलाई स्वतन्त्र एवं सृष्टिकर्ताको रूपमा बताएको छ। मलाई कर्मपरतन्त्रको रूपमा

उक्त वेदले नै चित्रित गरेको छ। हजुरलाई कसैमाथि पनि पक्षपात र द्वेष छैन त्यही भएर तत्तद् व्यक्तिहरूले गर्ने पुण्य–पापादिकर्मको अनुगुण नै उनीहरुलाई हजुरले जन्म प्रदान गर्नुहुन्छ भनेर वेदान्तसूत्रकार वेदव्यासजीले पनि ''***वैषम्यनैर्घृण्ये न सापेक्षत्वात्***'' भनेर उक्त वेदलाई नै समर्थन गर्नुभएको छ। हजुर स्वतन्त्र नै हुनुहुन्छ, हामीजस्ता जीवहरू कर्मपरतन्त्र हुन् भनेर उहाँले निर्धारण गर्नुभएको छ।।

आफूले गरेको कर्मको अनुसार शास्त्रनियमद्वारा त्यसको उचित फललाई अनुभव गर्नुपर्ने म कर्मपरतन्त्र हुँ भने त ''यो कर्मको यो फल हो'' भनेर बताउने त्यही शास्त्रको अधीनमा (मर्यादामा) रहेर फलप्रदान गर्नेवाला हजुर पनि के कर्मको परतन्त्र हुनुहुन्न र? शास्त्रनियमको अधीनमा भएर रहनु दुवैको लागि समान छ भने एकजना स्वतन्त्र र एकजना परतन्त्र भनेर निर्णय गर्नु पनि पक्षपात त होनि? त्यही भएर राम्रोसंग विमर्श गर्ने हो भने वेदले र वेदव्यासजीले गरेको वाद तर्कसंग टिक्दैन। मचाहिं स्वतन्त्र कसरी हुन सक्दिन? कसैको आदेशलाई पनि नमानीकन स्वेच्छापूर्वक अनादिकालदेखि म प्रवर्तन गर्दै आएको छु। हे स्वामिन्! हजुरले यतिबेला परिहासपूर्वक मलाई यो सोध्न सक्नुहुन्छ कि– ''तेरो वादलाई मैले स्वीकार गर्दछु। एकजनाले निर्देश गरे अनुसार नचलेर आफ्नो इच्छानुसार मात्र कर्म गर्नु स्वतन्त्रता होइन। इच्छा

गरेको कामलाई संकल्पमात्रद्धारा नै गर्नसक्ने शक्ति रहनु नै स्वतन्त्रता हो। यही नै सत्यसङ्कल्प र स्वतन्त्रता पनि हो। के तैंले यस्तो गर्न सक्छस् त? प्रकृतिबद्ध भएर रहेको तैंले रजस्तमःप्रभावद्धारा उसले जे गरायो त्यही गर्दछस्। के चक्रवर्ती हुन चाहने बित्तिकै तत्क्षणमा बन्न सक्छस् त? रोग आयो भने निकालेर फ्याँक्नसक्छ स्? कुनै समयमा त तँमाथि भन्किने गरेका माखा र लामखुट्टेहरूलाई पनि निवारण गर्न सक्दैनस्। कसरी तँ स्वतन्त्र भइस्?'' भनेर परिहास गर्न सक्नुहुन्छ।।

ठीकै छ मैले यौटा परीक्षा लिन्छु। हजुरले खडा भएर हाम्नो स्वतन्त्रतालाई निरूपण गर्नुहोस् हेरौं। हजुरले पनि अनादिकालदेखि शास्त्रनियमको अधीनमा भएर त्यसैमा बताए अनुसार मेरो कर्महरूको फललाई प्रदान गर्नुहुन्छ। त्यो नियमलाई हटाएर हजुरले पनि स्वतन्त्ररूपमा व्यवहार गर्ने हो भने, र मेरो कर्मबन्धनलाई छेदन गर्ने हो भने मैले गरेका दोषहरूलाई गणना नगरेर तत्क्षणमै भुलेर रक्षा गर्न सक्नुहुन्छ भने, र मलाई आफ्नो श्रीवैकुण्ठमा लिएर जान सक्ने हो भने हजुर अवश्य नै निरङ्कुशस्वतन्त्र हुनुहुन्छ भनेर स्वीकार गर्ने छु। यही नै हजुरको स्वातन्त्र्यको विषयमा मैले राखेको निकषोपल जस्तो परीक्षा हो। त्यस्तो गर्नुहोस् हेरौं।।१३।।



श्रीरङ्गेश! वचो मदीयमधुना व्यक्तं त्वया श्रूयतां
पुण्यं तत्फलसङ्गमात्रविरहात् भूयो न मां प्राप्नुयात्।
पापं नैव तथा फलं वितनुते शक्यं न तद्वारणं
त्वत्क्षान्त्या तव शक्यमेव तदियं सद्यस्त्वया कल्प्यताम्।१४।।

**विवरण-** हे रङ्गनाथ! यो सबै विस्तारचर्चा किन गरौं र? मेरो अनुभवमा भएको यौटा वास्तव कुरालाई बताउँदै छु। सुन्नुहोस्। पुण्य, अनेकशास्त्र नियमहरूद्वारा नै साध्य हुनसक्ने काम हो। धेरै नै कष्ट गर्नुपर्ने हुन्छ। थोरै लोप भयो भने पनि प्रायश्चित्तहरू अनिवार्य हुन्छन्। यत्रो गरेर तुरुन्तै फल मिल्छ कि भन्दा–त्यो पनि छैन। कुन समयमा र कुन जन्मान्तरमा त्यो फल मिल्छ। त्यही भएर मलाई यी पुण्यफलहरूमाथि आसक्ति छैन। त्यही भयेर मैले पुण्य गर्ने प्रसक्ति पनि छैन। अब पाप भन्नुहुन्छ भने त्यसलाई गर्ने बित्तिकै चाहेको फल मिल्छ। क्षणकालमा नै वञ्चना गरेर थुप्रै धनार्जन गर्न मिल्छ। त्यो गर्न अतिसुलभ छ। यी दुराशाहरूले गर्दा मैले पाप नै गर्दै छु। तत्काल नै अर्थ–कामरूप फलहरू पनि मिल्दैछन्। त्यो पापप्रवृत्तिलाई छोड्नु भनेर हजुरले जति नै शासन गर्दा पनि त्यो मलाई साध्य भएन।अभ्यास भएको त्यो कर्म छोड्न मबाट बन्दैन।

पहिला गरेका मेरा अपराधहरूलाई क्षमा गरेर पुन: ती पाप हरूमा मेरो प्रवृत्ति नहुनेगरी रोक्न सक्ने शक्ति हजुरमा छ। *हृषीकेश* (इन्द्रियहरूका नियन्ता) को रूपमा विद्यमान हजुरले संकल्प गर्ने हो भने सहसा मेरो मनलाई बदल्न सक्नुहुन्छ। त्यस्तो गरेर मलाई अनुग्रह गर्नुहोस्।।१४।।



*श्रीरङ्गेश्वर! पुण्यपापफलयो: स्वाधीनतां कुर्वतो:*
*सर्वेषां सुखदुखयो: स्वयमहं मग्नाशयो मामपि।*
*स्मर्तुं न प्रभवामि किं पुनरहं त्वामन्तरन्त: स्थितं?*
*तत् ते त्वं क्षमया निरस्य कुरु मे त्वत्ध्यानयोग्यां दशाम्।।१५।।*

**विवरण**- हे श्रीरङ्गनाथ! पुण्यको फल सुख,र पापको फल दु:ख हो। यी दुवैले स्वयं मानवहरूलाई वशमा गरेका छन्। ती पुण्य–पाप हरूको वशमा परेको व्यक्तिले जति नै महान् भयेता पनि कुनै काम गर्न सक्दैन। त्यसैगरी म पनि सुख–दु:खरूप त्यही हिलोमा गडेर माथि आउन नसक्ने स्थितिमा छु। "म को हुँ, मलाई यस्तो दु:स्थिति कसरी आयो, यो कसरी निवृत्त हुन्छ"? भनेर मेरो विषयमा मैले आफै विचार गरेर निर्धारण गर्ने शक्ति पनि ममा लुप्त भइसक्यो। यस्तो अज्ञानमा परेर सुख–दु:ख नामक खाडलमा उत्रियेर छट्पटाउँदैभएको मैले मेरो हृदययरूपी अन्धकारगुफामा

निगूढरूपमा विराजमान रहेका हजुरलाई स्मरण गर्न सकेको छैन। शास्त्रहरूले बताएको पद्धति अनुसार–

अष्टाङ्गयोगध्यानपद्धतिलाई अवलम्बन गरेर हजुरको उपासना गर्न सक्ने सामर्थ्य ममा छैन। "त्यसो हो भने त तँलाई रक्षा गर्न मिल्दैन" भन्नुहोला। त्यस्तो हो भने हजुरले नै ममा भएका प्रतिबन्धक समस्त पापहरूलाई क्षमा गरेर मेरो हृदयलाई निर्मल बनाएर ज्ञानदीप बालिदिएर श्रद्धा–भक्तिहरूलाई उद्दीप्त बनाइदिएर निरन्तर हजुरकै ध्यान गरेर अन्तिमस्मृतिको साथमा हजुरको सन्निधिलाई पाप्त गर्ने योग्यताको व्यवस्था गरिदिनु। म स्वयं बन्धनबाट विमुक्त हुन सक्ने सामर्थ्य ममा छैन भन्ने भाव हो।१५।।



अल्पं चेदनवेक्षणीयसरणावारोप्यतां मत्कृतं
किंचिद्भूरि भवेदिदं यदि गुरून् संप्रेक्ष्य मे त्यज्यताम्।
यद्वाऽनन्तमनन्तवैभवजुषो रङ्गक्षमावल्लभ!
त्वत्क्षान्त्याः खलु लक्ष्यतामनुगुणामानीयतां तत्त्वया।।१६।।

**विवरण**- हे श्रीरङ्गाधिपते! जसरी हेर्दा पनि हजुरले मलाई कृपा नगरीकन छोड्न मिल्दैन। मेरा दोषहरू थोरै नै छन् भनेर भावना गर्ने हो भने "थोरै त हो भइहाल्यो"

लिएको व्यक्ति म (वेदाचार्य) हुँ। त्यही भएर "यो हाम्रै व्यक्ति हो" भन्ने अभिमान (आत्मीयता) देखाएर हजुरले मलाई अवश्य क्षमा गर्नुपर्ने हुन्छ। सदाचार्यसम्बन्ध व्यर्थ हुनहुँदैन॥

अथवा– "त्यसरी पनि नमिल्नेगरी (क्षमागर्ने अवकाशै नहुनेगरी) घोर अपचारहरू गरकोहुनाले तँलाई क्षमा गर्ने प्रसक्ति नै छैन भनेर उपेक्षा गर्न खोज्नुहोलानि? त्यस्तो भए पनि झन् राम्रै हुने छ। जयन्त (काकासुर) आदिलाई पनि क्षमा गरेको भन्ने प्रसिद्धिलाई प्राप्त गरेका उनीहरूभन्दा पनि परमनीच मलाई क्षमा गर्नुभयो भने अनन्त प्रतिष्ठा (वैभव) प्राप्त हुने छ। अत: मलाई छोड्नुभयो भने मजस्तो सर्वपापाश्रय व्यक्ति हजुरलाई अर्को मिल्दैन। यत्रो दिनमा योग्य व्यक्ति मिल्यो भन्ने मानेर अपेक्षाबुद्धिको साथमा मलाई क्षमा गरेर सेवकको रूपमा स्वीकार गर्नुहोस्। यसरी हजुरको क्षमागुण नै सर्वोत्तम हो भन्ने ख्याति मिलोस्। हजुरलाई त्यत्रो प्रसिद्धि प्राप्त गराउनेवाला म पनि शाश्वतरूपमा उज्जीवित हुनेछु। जसरी हेर्दा पनि म क्षन्तव्य नै छु।१६॥





*संत्यक्तसर्वविहितप्रियमर्थकाम-*
*श्रद्धालुमन्वहमनुष्ठितनिन्द्यकृत्यम्।*
*अत्यन्तनास्तिकमनात्मगुणोपपन्नं*
*मां रङ्गराज! परया कृपया क्षमस्व।।१७।।*

**विवरण**- षोडशी--भन्ने नामको अनुगुण १६ श्लोकहरू द्वारा यहाँसम्म अनुसरण हुँदै आयेको स्तोत्र पुरा भयो। यस स्तोत्रका रचयिता *श्रीवेदाचार्यस्वामीजी* उत्तम ज्ञान वैराग्यादिगुणसम्पन्न हुनुहुन्थ्यो। यो स्तोत्रमा *''पापानां प्रथमोऽस्म्यहम्''* (श्लो० २) इत्यादिरूपमा बताइएको नैच्यानुसन्धान सबै, वास्तवमा उहाँमा लागु नै हुँदैन।।

हामीजस्ता व्यक्तिहरूले भगवत्सन्निधिमा आर्तिको साथमा आफ्नो अपराधहरूलाई निवेदन गर्नेबेलामा न छिपाईकन भगवान्संग बताएर क्षमा गर्नुहोस् भनेर प्रार्थना गर्नुपर्दछ भनेर हामीलाई प्रबोध गराउनु नै यसमा भएको परमार्थ हो। अब अन्तिममा आफूमा भएका सबै प्रकारका दोषहरूलाई आवृत्ति गेरर बत्ती देखाएर अन्वेषण गरेर हेर्दा पनि मात्र यौटा गुण पनि ममा छैन भन्ने वास्तवलाई विशदीकरण गरेर, हजुरले क्षमा नगर्दासम्म मेरो अर्को गति छैन भनेर भगवान्को श्रीपादारविन्दहरूमा आत्मार्पण गर्नुपर्दछ

भन्ने विषयलाई स्वानुष्ठानपूर्वक हामीलाई यस अन्तिमश्लोकमा आचार्यचरणले शिक्षा दिँदै हुनुहुन्छ।।

स्वामिन्! वेद हजुरको आज्ञारूप हो। मानवहरूको श्रेयस्को लागि चातुर्वर्ण्यविभाग एवं ब्रह्मचर्य, गृहस्थाश्रम आदिको पनि विभाग गरेर तत्तत् अधिकारीहरूलाई ''यो यो गर्नु–यो यो छोड्नु'' भनेर वेदशास्त्रमा हजुरले आज्ञा दिनुभएको छ। मैले, हजुरले गर्नु भनेर आज्ञा गरेको कर्मलाई छोडेर, नगर्नु भनेर निषेध गरेको कर्मलाई गर्दै आएँ। म त्यस्तो अज्ञानी र अहंकारी हुँ। कमसेकम यौटा पनि सत्कर्म मेरो आचरणमा छैन। ती कर्महरूको आचरण गरौं भन्ने श्रद्धा ममा अणुमात्र पनि छैन। मेरो श्रद्धा अर्थ–कामहरूमा नै छ। त्यसमा मैले आनन्द मानें। त्यसैको निमित्त अनेक निहीनकर्महरू गरें। यी पापकर्महरूबाट नरकको प्राप्ति हुन्छ भन्ने भय पनि मलाई भएन। ईश्वर–धर्म–परलोक भन्ने विषयहरूमा अणुमात्र पनि विश्वास नभएको म, परमनास्तिक हुँ। माथिमाथि आस्तिकले जस्तो अभिनय गरेर लोकलाई वञ्चना गरें। *''अमानित्वमदम्भित्वम्''* इत्यादिरूपमा भगवद्गीतामा बताइएका आत्मगुणहरू त ममा छँदैछैनन्, दुर्गुणहरू पूर्णरूपेण ममा नै निवास गर्दछन्। यही नै मेरो

विश्वरूप हो। यस्तो म आफै सुधार हुनसक्ने अवकाश कहिल्यै पनि छैन। अरु कसैले पनि मेरो यो स्थितिलाई देखेर जुगुप्सा नै गर्छन् तर उद्धार गर्न सक्दैनन्। परमदयालु, उदार एव सहनशील हजुर यौटैले मात्र मेरो समस्तपापहरूलाई क्षमागर्न सक्नुहुन्छ भनेर मैले शरणागति गर्दै छु।१७।।

## ✪ फलश्रुति ✪

*श्रीमान् कूरान्ववाये कलशजलनिधौ कौस्तुभाभोवतीर्णः*
*श्रीवेदव्यासभट्टारकतनयवरो रङ्गराजस्य हृद्यः।*
*वेदाचार्याग्र्यनामा विदितगुणगणो रङ्गिणः स्तोत्रमेतत्*
*चक्रे नित्याभिजप्यं सकलतनुभृतां सर्वपापापनुत्त्यै।।*

**विवरण-** यो श्लोक, स्तोत्रकर्ता वेदाचार्यको विषयमा उहाँकै कोही शिष्यले रचना गरेको हो। काञ्चीपुरम्को समीपमा ''कूरम्'' भन्ने अग्रहार (सज्जनहरूको बस्ती) छ। त्यस अग्रहारका अधिपतिको रूपमा रहेका श्रीवैष्णवोत्तमहरूको वंश नै कूरान्ववाय हो। ग्रामको नामलाई वंशनामको रूपमा मिलाउने (जोड्ने) कुरा लोकव्यवहारसिद्ध नै छ। यो *कूरान्ववाय* क्षीरसमुद्र जस्तो हो। यसैमा कूरत्ताल्वान् (श्रीवत्सचिह्नमिश्र) श्रीपराशरभट्टर् र श्रीसुदर्शनभट्टर्जस्ता अनेकन् उत्तमाचार्यरत्नहरू प्रादुर्भाव भए। श्रीवैष्णवगुरुपरम्परासँग सम्बन्धित उज्ज्वल

चरित्रमा लगभग आधाभाग यी महाचार्यहरूको वैभव नै छ भनेर भन्न सकिन्छ। त्यो कूरान्वयक्षीरसागरमा उत्पन्न भएका अनेकरत्नहरूमा कौस्तुभरत्नजस्तो हुनुहुन्छ प्रस्तुत स्तोत्रकर्ता *श्रीवेदाचार्यस्वामीजी*। महामेधावी, परमप्रामाणिक, श्रीरामानुजभाष्यको अत्युत्तम व्याख्याका रचयिता, श्रीरङ्गनाथ भगवान्द्वारा *"वेदव्यासभट्टर्"* भन्ने बिरुदनामलाई प्राप्त गरेका श्रीसुदर्शनभट्टर्का पुत्ररत्न नै यी स्तोत्रकर्ता हुनुहुन्छ। यहाँ (स्तोत्रकर्ता) श्रीरङ्गम्मा नै निवास गरेर श्रीरङ्गनाथ भगवान्का विविध उत्सवहरूलाई निर्वहण गर्ने भगवान्को प्रीतिपात्र एवं परमभक्त हुनुहुन्थ्यो। श्रीरङ्गनाथभगवान्को क्षमागुणको सङ्कीर्तन गर्दै यस *क्षमाषोडशी*लाई आशुकविताको रूपमा रचना गर्नेवाला महानुभाव हुनुहुन्थ्यो। त्रिगुणात्मक प्रकृति सम्बन्धको अनुसार अज्ञानद्वारा कुनै सानो–ठूलो पाप नगर्ने व्यक्ति लोकमा कोही पनि हुँदैन। ती पापहरूको प्रायश्चित्त गरेर निवृत्त गर्न सक्ने व्यक्तिहरू पनि हुँदैनन्। कुनै न कुनै एक दिन भए पनि सबैजनाले पश्चात्तापले युक्त बनेर भगवत्सन्निधिमा आफ्नो गल्तीहरूलाई निवेदन गरेर क्षमा गर्नुहोस् भनेर भगवान्सँग प्रार्थना गर्नुबाहेक बन्धविमुक्तिको लागि अर्को मार्ग छैन। यस परमसत्यलाई जानेर भगवान्को

प्रार्थना गर्न चाहने व्यक्तिको लागि अवश्य नै नित्यानुसन्धेय छ यो स्तोत्र। प्रार्थनाद्वारा प्रसन्न परमात्माले यसलाई अनुसन्धान गर्ने भक्तहरूको समस्त पापहरूलाई क्षमा गरेर अवश्य अनुग्रह गर्नुहुने छ।।

☆☆☆

✪स्वस्ति✪



## विवरणकर्ताका
## अन्य उपलब्ध्य कृतिहरु

| | | |
|---|---|---|
| १. | मधुरोपहार | मूल्य रू. १५।– |
| २. | अमृतलहरी | मूल्य रू. २५।– |
| ३. | श्री वैष्णवसौभाग्यम् | मूल्य रू. १५।– |

मुद्रक :

**गणेश छापाखाना**

मेनरोड, नारायणगढ, फोन : ०५६–५२०५४८, ५२६६३८, ९८४५०२६८९५